# नेपालका पुराना वैज्ञानिक तथा प्राविधिज्ञहरू

( जीवनी तथा योगदान )

लेखक:

प्रा. डा. छविलाल गजुरेल

करुणाकर वैद्य

नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान

विस २०४५

# अभयराज शाक्य

**परिचयः**

ललितपुरस्थित प्रसिद्ध महाबौद्ध–मन्दिर एक अद्वितीय माटो–उद्योग तथा कालिगडीको नमूना रहेको छ । यसले नेपालको गौरव नै बढाएको छ । यो नेपाली कालिगडीको अतुलनीय सीपको रूपमा हाम्रो अगाडि रहेको छ । माटोको यस्तो अनुपम कलाकृतिको सिर्जना गर्नेमा त्यही महाबौद्ध टोलका निवासी कलाकार तथा माटो–विशेषज्ञ अभयराज शाक्यको नाउँ सर्वप्रथम आउँछ । भनिन्छ– कान्तिपुरका राजा रत्न मल्लको राज्यशासनकालमा पहिलो पल्ट नेपालमा तामाको धाउ खानीबाट झिकेर तामाको पैसा बनाउने काम पनि यिनै प्रविधिज्ञ बौद्धाचार्य श्री अभयराजले गरेका थिए । उनले नै यो महाबौद्ध मन्दिर बनाउन चाहिने विभिन्न प्रकारका माटो ल्याएर वि. सं. १६०१ मा यस मन्दिरको निर्माण गराएका थिए ।[१] यो मन्दिर निर्माण गर्दा कुन कुन माटो कहाँ-कहाँबाट ल्याइयो, कसरी माटो झिकियो, कुन अनुपातका माटो मिलाइयो आदि कुरा लेखिएको वंशावली आजतक प्राप्त हुन सकेको छैन । वि. सं. १९९० सालको भूकम्पपछि फेरि महाबौद्ध-मन्दिर जीर्णोद्धार गर्दा त्यही महाबौद्धटोलका निवासी दिवङ्गत श्री सिद्धिनरसिंह शाक्यज्यूलाई महाबौद्धको छोटो इतिहास लेख्न लगाइएको थियो, तर उनले पनि उक्त पुरानो वंशावली पाउन सकेनन् । अहिले महाबौद्धको इतिहासजस्तै लेखिएको एक पाण्डुलिपि पं. हेमराज शाक्य-(थैना)-सँग छ जुन अद्यापि प्रकाशित हुन सकेको छैन ।

---

१. **नेपालको महाभूकम्प**–ब्रह्मशमशेर ज. ब. रा. पृ. ११६ ।

दुर्लभ वंशावली प्राप्त हुन सकेमा ती माटोको खोज तलास गरी वैज्ञानिक विश्लेषण गर्नु राम्रो कुरा हुनेछ । आजकल हामी ती प्राचीन समयमा प्राप्त गरिएका माटाको नाम र किसिम पनि थाहा नपाउने भइसकेका छौं ।

चार-पाँच सय वर्षसम्म पनि ती भवन र मन्दिरहरू बनेको तेलिया इँट, सुन्दर माटोका बुद्धमूर्तिहरू, चतुरमहाराजहरू इत्यादि ज्यौंका-त्यौं रहन सकेका छन् । यसैले माटो-प्रविधिज्ञ अभयराजको वैज्ञानिक दक्षता र प्राविधिक ज्ञानको प्रशंसा नगरी रहन सकिँदैन । आज नेपालमा यो महाबौद्ध मन्दिर हेर्न आउने विदेशी पर्यटकहरू तथा अनेकौं विद्वान्हरूलाई यसले ठूलो प्रभाव पारिरहेको छ । तर दु:खको कुरा यो हुन आउँछ कि यस्ता महान् कलाकार तथा प्रविधिज्ञ अभयराज शाक्यको विषयमा हामीलाई राम्रो ज्ञान अझै भएको छैन । न उनको विषयमा कुनै राम्रो खोजीनिधी वा अनुसन्धानको काम नै हुन सकेको छ, न त उनको केही उचित कदर नै गरिएको छ ।

## जन्म, पारिवारिक जीवन तथा व्यक्तित्व

माटो-विशेषज्ञ अभयराजको जन्ममिति र उनको कुलको विषयमा हामीलाई राम्रो ज्ञान छैन, उनका पिताजीको नाम श्री मधना बौद्धाचार्य थियो भन्ने भनाइ पं. हेमराज शाक्यज्यूको छ । भनिन्छ— उनका तीन पत्नीहरू र सात भाइ छोराहरू थिए ।

राइटको इतिहासअनुसार तीन पत्नीहरूमध्ये २ जनाका सन्तान थिए । एउटीका दुई छोरा र अर्कीका ४ छोराहरू थिए । उनले फेरि चौथी पत्नी ल्याएका थिए । यसले गर्दा जेठा छोराहरूको चित्त नबुझेकोले उनी चौथी पत्नी साथ लिएर गयास्थित बौद्धगयामा गएका थिए । चौथी पत्नीबाट एक छोराको जन्म भयो । ती ७ छोराहरूको ज्येष्ठताक्रम यस प्रकार थियो— अभयज्योति, द्वँलेजु (भिक्षु हुने), मयूरजु, वेधजु, जगन्नाथजु, हेरजु, बुद्धजु (कान्छो) ।

अभयराज शाक्यज्यू एक बहुप्रतिभाशाली व्यक्ति थिए । उनी खानी-विशेषज्ञ, मृत्तिका-विशेषज्ञ हुनुका साथै एक दक्ष वास्तुकलावित् पनि थिए । भारतको बौद्धगयाको बौद्ध मन्दिरको नापनक्सा उतारी सोही

आकृतिबमोजिम पाटनमा बौद्ध मन्दिर बनाइएकोबाट उनमा नापनक्सा बनाउने दक्षता रहेको स्पष्ट देखिन्छ । उनी बौद्ध धर्म र दर्शनमा पनि पारङ्गत थिए, खास गरी बौद्ध ध्यान र योगचर्यामा तल्लीन रहन्थे ।



## अभयराजको योगदान

अभयराजले बौद्धगयामा तीन वर्षसम्म रही आफ्नो समय जप र ध्यानमा बिताए ।

उनी नेपाल फर्केपछि त्यस वेलाका राजा अमर मल्लले उनलाई बोलाई भने– "अभयराज ! जसरी मेरो बुबाले तिम्रो बुबालाई (मधनालाई) डिट्ठा नाइके बनाइराखे त्यस्तै म तिमीलाई डिट्ठा नाइकेको पदमा नियुक्ति गर्दछु, तिमी पनि तामाको धाउबाट तामा खारेर पैसा, ढयाक इत्यादि बनाउने काममा लाग ।"[१]

नेपाल फर्केर आएपछि अभयराजले बौद्धगयाको मन्दिरको ढाँचामा आफ्नै नेपाली शैली र मौलिकता दिएर एक बुद्धमन्दिर तयार गर्न नापनक्सा ठीक गरे । त्यसपछि उनले त्यस मन्दिरको जगको शिलान्यास गराए र एक तला उठाए । ने. सं. ६८६ (त्रि. सं. १६२३)-मा जगको शिलान्यास भएको थियो । बौद्धगयाबाट ल्याइएको एक सानो बुद्धमूर्ति गर्भमा राखेर शाक्यमुनि बुद्धको मूर्ति बनाएर त्यस मूर्तिलाई त्यसै मन्दिरभित्र प्रतिष्ठापित गरिदिए, जुन अद्यापि छँदैछ । त्यस मन्दिरको पूर्व दिशामा उनकै एक घरमा आगमकोठा बनाएर त्यसभित्र विद्याधरीदेवीको एक सुन्दर मूर्ति बनाएर स्थापना गरिदिए । यो मूर्ति पनि अद्यापि छँदैछ । यो काम राजा अमर मल्लको शासनकालमा भएको थियो ।

यसरी यस अनुपम महाबौद्ध-मन्दिरको शुरुआत गरी नेपालको कलाकौशलको ख्याति फैलाउने काममा यिनको ठूलो योगदान रहन

---

१ डि. राइट– **नेपालको वंशावली,** पृ २०४–२०५

गएको छ ।

यस महाबौद्ध-मन्दिरको निर्माण भएको समयको विषयमा इतिहासकारहरूको राय मिलेको देखिदैन । डि. राइटको लेखाइअनुसार पहिले अभयराज बौद्धगयाबाट फर्केर आए, अनि तीनतले महाबौद्ध-मन्दिरको निर्माण गराए भन्ने लेखिएको छ । पुनः पछि राजा सदाशिव मल्लको शासनकालमा अभयराजका नाति, बौद्धज्यूका छोरा जीवराज बौद्धगया गएका थिए र उनी फर्केर आएर बौद्धगयाको ढाँचा आउने गरी एक मन्दिर बनाए, जसलाई महाबौद्ध नाम दिइयो भनेर पनि लेखिएको छ ।[1]

पुनः त्यस्तै यस महाबौद्धको निर्माणकाल सदाशिव मल्लको शासनकालमा कुनै एक जीवराज नामक व्यक्तिले बौद्धगयाबाट फर्केर आई बौद्धगयाको मन्दिरको नक्साको अनुकरण गरी एक विशाल मन्दिर बनाए र त्यो महाबौद्धको नामले अद्यावधि प्रसिद्ध छ[2] भनी नेपालको ऐतिहासिक रूपरेखामा लेखिएको छ । तर राजा अमर मल्लको पालामा बौद्धगया गएर बस्ने अभयराजको केही उल्लेख छैन । त्यस्तै **डि. राइटको हिस्ट्री** अफ नेपाल मूल वंशावलीबाट पं. शिवशङ्कर सिंह ( उसबखत ब्रिटिश रेजिडेन्सीका मुन्शी) र पं. गुणानन्द (पाटननिवासी) मिलेर अनुवाद गरी इ. सं. १८७७ मा प्रकाशित गरेका थिए । 'नेपालको ऐतिहासिक विवेचना'– नामक ग्रन्थमा पनि जीवराजनामक एक बौद्ध भिक्षुबाट बुद्धगयाको मन्दिरको नक्कल गरी पाटनमा बौद्ध मन्दिर बनाएको भन्ने लेखिएको छ ।[3]

तर उपर्युक्त कुराहरूमा गहिरो अध्ययनको अभाव झल्कन्छ । स्थानीय वंशावलीअनुसार बौद्धगया गएर तपश्चर्या गरी फर्केर आउने अभयराज शाक्य नै थिए भन्ने कुरामा दुई मत पाइँदैन । हुन सक्दछ, राजा सदाशिवको पालामा जीवराज बौद्धगयामा दर्शनार्थ गएका थिए । तर महाबौद्धको अग्रिम नापनक्सा तयार गरिएको र कामको शुरुआत गरिएको जीवराजका बाजे-( अभयराज ) - बाट नै हुनुपर्छ । अभयराजले सो महाबौद्ध मन्दिर पूर्ण रूपमा तयार गर्न सकेनन् । वास्तवमा यो

---

१. डि. राइट, *History of Nepal*, पृ. २०४ र २०८ ।

२. बालचन्द्र शर्मा, **नेपालको ऐतिहासिक रूपरेखा**, पृ. १६५ ।

३. प्रो. ढुण्ढिराज भण्डारी–**नेपालको ऐतिहासिक विवेचना**, पृ. १२०

मन्दिर तयार गर्न तीन पुस्ताको समय बितेको थियो र जम्मा ३५ वर्ष लाग्यो ।

घरायसी कारणले गर्दा अभयराजका छोराहरूले बाबुलाई त्यतिको सहयोग नदिएको हुन सक्दछ, कारण : उनी बौद्धगया जानुको एक कारणमा पहिलेका पत्नीहरूबाट जन्मेका छोराहरू उनीसित चिढिनु पनि थियो । उनका चार छोराहरू छुट्टिएर महाबौद्धमा अलग्ग बस्न गएका थिए, त्यसपछि अन्य दुई छोराहरूलाई पनि छुट्टयाएर उनी बौद्धगया गएको भनिन्छ । त्यसपछि फर्केर आएर उनले आफ्नै घरनजीकै सो महाबौद्ध-मन्दिर बनाउन योजनाको तयारी गरेको हुनुपर्छ । तर मन्दिर पूरा नहुँदै अर्थात् एक तलाजति मात्र पूरा हुँदैमा उनको मरण भएको थियो । केही वर्ष बितिसक्दा पनि सो मन्दिरको काम पुन: थालिन सकेन । आखिर फेरि अभयराजका कान्छा छोरा बुद्धजुबाट सो कामको प्रारम्भ भयो र एक तला उठाइयो । सो काममा फेरि शिथिलता आयो । बुद्धजुको पनि शेषपछि उनैका छोरा जीवराजको समयमा त्यो निर्माणको काम पूरा गरियो र मन्दिरको सबैभन्दा माथि टुप्पोमा शून्य नैरञ्जन चैत्यको स्थापना गरियो । स्थानीय वंशावलीअनुसार यो मन्दिर पूरा भई विधिवत् प्रतिष्ठा भएको ने. सं. ७२१-(वि. सं. १६५८)-मा हो र प्रतिष्ठा हुँदा त्यस वेलाका राजा सदाशिव मल्ल आएका थिए भनिन्छ ।

यसरी एक श्रेष्ठ कलाकारले गुरुयोजना तयार गरी निर्माण थालिएको यो महाबौद्ध-मन्दिर उनैका नातिको पालामा गएर पूर्ण भयो ।

यो मन्दिर तयार भइसकेपछि पं. जीवराज स्वयं यस महाबौद्ध-मन्दिरको प्रसाद लिएर सिक्किमका प्रमुख लामाकहाँ टक्र्याउन गएका थिए । त्यसवेला सिक्किमका लामा प्रसन्न भएर प्रसाद राखेर ल्याएको 'बभू' भन्ने थालमा सुनको थुप्रो राखिदिए । जीवराज घर फर्केर आएपछि सो आफ्नै निजी सम्पत्ति नगराई त्यसबाट श्री करुणामय मच्छिन्द्रनाथको रथको चारै ढोका र तोरणमा सुनको जलप लगाउन लगाए । यसैले आजसम्म पनि मच्छिन्द्रनाथको रथ बनाउँदा सो सुनको ढोका तोरण आदि त्यसै महाबौद्ध-विहारबाट लिन आउने चलन छ । रथयात्रा सकिएपछि त्यसै विहारमा सो माल फर्काउने चलन अद्यावधि छँदैछ । लग्न र ल्याउन करीब १०० व्यक्तिहरू कार्यरत हुन्छन् र उनीहरूलाई आजसम्म पनि एक एक कुरुवा चामल दिने चलन छ । यस कामको निमित्त ४० रोपनी जग्गा

खेत राखिएको छ ।

अभयराजलाई खानी-विशेषज्ञ भने पनि अत्युक्ति नहोला । अभयराजलाई राजा अमर मल्लबाट तामा-खानीको डिट्ठा-नाइके बक्स भएपछि उनले चित्लाङमा (काठमाडौं उपत्यकाबाहिर पुरानो भीमफेदी जाने बाटोमा) तामाको धाउ खनी खोजी धाउ खारेर शुद्ध तामा निकाले । सो प्रविधिको उनलाई राम्रो ज्ञान थियो । त्यसै तामाबाट एकपैसे, दुईपैसे ढ्याकमा टक मार्ने गर्दथे । त्यसै कारणले अद्यावधि चित्लाङ गाउँमा टक्सार भन्ने स्थान छँदैछ । इतिहासकारहरूको लिखत छ– यसरी तामा खार्ने काम राजा रत्न मल्लको पालादेखि नै चलेको थियो । यिनै राजाका पालामा चित्लाङबाट धाउ ल्याई श्री मघना बौद्धाचार्य, ॐकुलीबिहार-



(पाटन)-निवासीलाई डिट्ठा-नाइकेको पद दिएर काम गराएका थिए । यी बौद्धाचार्य श्री अभयराजका पिता हुन् भन्ने कुराको उल्लेख अघि नै गरिसकिएको छ । राजा रत्न मल्लको शासनकाल इ. सं. १५०१ तिर पनि आउँछ ।[१]

---

१. D. Wright–*Histoty of Nepal*, पृ. २०२–२०३

माटोको काममा श्री अभयराजको सीप कम थिएन । यस महाबौद्ध-मन्दिरको एक-एक इँटमा नेपालीपनाको कालिगडीको नमूना झल्किन्छ । एक-एक इँटमा बुद्धमूर्ति छापिएको छ र चारै दिशामा चार ठूला-ठूला माटाका चतुर महाराजहरूका मूर्तिहरू छन् । भनिन्छ-उनले यस्तो कलात्मक इँट र मूर्तिहरू बनाउनलाई विशेष किसिमको माटो खनी खोजी ल्याएका थिए । यस माटामा आधा बालुवा र आधा माटाको अनुपात रहेको छ भनी वंशावलीमा लेखिएको छ । फेरि माटो पनि ५–६ प्रकारको प्रयोग भएको छ, जस्तै– गिगिचा माटो, हाकुचा माटो, थकरा माटो, फिफिचा माटो, गुर्गुचा माटो इत्यादि ।

यो विभिन्न प्रकारका माटाहरू कहाँबाट झिकिए कसरी झिकिए इत्यादि विधि लेखिएको वंशावली पाउन सकिएको छैन । यस विषयमा केही कुरा 'नेपालको महाभूकम्प'-मा लेखिएको छ, तर ज्यादै छोटकरीमा मात्र ।[१]



तर यै पनि माटोको अनुसन्धानको निम्ति आधार हुनजानेछ । त्यही पुरानो वंशावलीको विधि अपनाएर वि. सं. १६०८ मा मन्दिर बनाउँदा

१. श्री मे. ज. ब्रह्मशमशेर ज. ब. रा.–**नेपालको महाभूकम्प**, पृः २४४

काममा लगाइएका इँट बनाउने काठको साँचो र अरू बयान सहितको लेख पाइयो भनी जेनरल साहेबले लेख्नुभएको छ । नेपालमा गएको वि. सं. १९९० सालको भूकम्पपछि बनेको महाबौद्ध देवल बनाउँदा उही पुरानो तरीका अपनाइयो ।[१] यी सबै हाम्रा महान् माटो-विशेषज्ञ पं. अभयराज शाक्यको प्राविधिक ज्ञानको फल हो भन्नुपर्दछ ।

## अन्तिम दिन

अभयराज शाक्यज्यूको परलोक कुन सालमा भयो सो पनि भन्न सकिएन । तिथिचाहिं पौष कृष्ण द्वितीयाको दिन हो भन्ने पं. हेमराज शाक्यको भनाइ छ । जे भए पनि वहाँका अन्तिम दिन सुखमय थिए र वहाँका कलाकृति नेपालको कलाको इतिहासमा अमर भई रहनेछन् ।

पं. अभयराज शाक्यज्यूको विषयमा अझ राम्ररी अनुसन्धान गर्नु बाँकी नै छ । हामीलाई देश-विदेशमा नेपाली माटो कलाको नाममा ठूलो ख्याति दिलाउनेमा पाटनको प्रसिद्ध महाबौद्ध देवल पनि एक प्रमुख कृति हो, तर दुःखको कुरा यो छ- यो कलात्मक मन्दिर बनाउने पं. अभयराज शाक्यज्यूबारे हामीलाई ज्यादै थोरै ज्ञान छ । अभयराजको घर यहीं थियो भन्न सकिदैन । तर महाबौद्धको चारैतिर कतै-कतै जग खनेर हेर्दा तामाका टुकडी वा ज्यावलहरू फेला पर्दछन् भन्ने कुरा स्थानीय बासिन्दाहरू गर्दछन् ।

## मान–कदर

मल्ल राजाहरूबाट यस महान् वैज्ञानिकलाई मान-कदर भए नभएको केही प्रमाण पाइएको छैन । तर यस कलाकृतिको कदर स्वरूप यस महाबौद्ध देवलको चित्र राखेर श्री ५ को सरकारले (ने. सं. १०७०) वि. सं. २००७ सालमा पाँचपैसे टिकट प्रचलनमा ल्याएको थियो । हाम्रा मृत्तिका-विशेषज्ञ तथा धातु-विशेषज्ञको सम्मान हाललाई यतिमै सीमित रहेको छ ।

---

९. कलाकार पत्रिका वर्ष १, अङ्क १ प्रकाशित वि. सं. २००९ साल सन् १९५३ जनवरी

# पं. निष्ठानन्द वज्राचार्य

**परिचय:**

पं. निष्ठानन्द बौद्धमार्गी समुदायमा अत्यन्त ख्यातिप्राप्त नाम हो। अहिलेसम्म पनि उनलाई **महान् गद्यगुरु** भनी लेखिन्छ। उनले



नेवारीमा रचेको गद्यग्रन्थ 'ललितविस्तर' अद्यापि महत्त्वपूर्ण ग्रन्थको रूपमा रहेको छ। हस्तलिखित सो ग्रन्थलाई मुद्रण गर्ने उनको ठूलो इच्छा

थियो । सोही इच्छानुसार उनी आफैं त्यसताका कलकत्ता गएर अक्षर छाप्ने टाइप किनेर ल्याएर आफ्नै बुद्धिले अडकल लगाई एक सानो टाइप यन्त्रको आविष्कार गरे । त्यो ललितविस्तर ग्रन्थ ने. सं. १०३४ (करीब ६९ वर्षअगाडि) छापी प्रकाशित गरियो । राणा-शासनकालमा सामान्य जनजीवनमा ठूलो जकडबन्दी थियो तापनि उनले ग्रन्थ छाप्ने काम गरिछाडे । बेलायत, फ्रान्स आदि पाश्चात्य मुलुकहरूमा छापाखानाको आविस्कार गरी ठूला-ठूला प्रयोग भइसक्दा पनि नेपालमा ग्रन्थ छाप्ने तरखर मात्र हुन थालेको थियो । चिनियाहरूले १७५ A. D. मा नै छापाखानाको प्रारम्भ गरेका थिए । १५ औं शताब्दीसम्म उता पनि हस्तलिखित ग्रन्थ नै प्रयोग हुन्थ्यो । काठको ब्लकबाट छापिएको एक कोरियन पुस्तक (सन् १३३७ को) अझै विद्यमान छ ।

बेलायतमा औद्योगिक क्रान्ति भएपछि William Caxton –(१४२२–१४९१)- ले सर्वप्रथम धातुको टाइपबाट The Game and Play of chesse नामक पुस्तक छापे ।[1] यी घटनाहरू चार सय वर्षभन्दा पहिलेकै थिए । त्यतिखेर नेपालको बाह्य देशसँगको सम्पर्क ज्यादै थोरै मात्र थियो । नेपालमा प्रेस-मेशिन सर्वप्रथम बनाउने काम करीब ७० वर्षअघि मात्र हुन सक्यो ।

नेपालमा पहिलो छापाखानाको आविस्कार गर्ने व्यक्ति वि. सं. १९४९ मा पाको पोखल्डचाङमा जन्मेका थिए । उनको नाम श्री उभयराज वज्राचार्य (दुरुकाजी वज्राचार्य) थियो । नेपालमा पहिले फलामको प्रेसबाट १२"×१६" साइजको कागज छापिन्थ्यो । यो प्रेस वि. सं. १९४९ देखि १९७९ सम्म बुद्धप्रेसको नामबाट पाको पोखल्डचाङमा चालू भयो । यस प्रेसबाट शुरूमा आर्य भद्रचारी ग्रन्थ (संस्कृत श्लोक नेवारीभाषामा अर्थसहित ) बोधिचर्य्यावतार, बोधिज्ञानचर्य्या आदि बुद्धधर्मसम्बन्धी पुस्तक नेवारी र संस्कृतभाषामा छापिए ।

यो प्रेस बन्नुअगाडि नेपालमा श्री ३ वीरशमशेर ज. ब. रा. को

---

1. *The Modern Wonder Book of knowledge* Pub. by Army Publishers. 166, New Lajpat Rai Market Delhi–6 page 655.

शासनकालमा श्री ज. गेहेन्द्रशमशेर ज. ब. रा. ले पनि एउटा प्रेस बनाएका थिए। भनिन्छ– यो प्रेस शुरूमा जमल भन्ने ठाउँमा थियो। सो प्रेसलाई नारायण प्रेस भन्दथे। तर सो नारायण प्रेस नेपालमा बनेको प्रेस भन्ने विषयमा खोजतलास हुनु बाँकी नै छ।[१]

वि. सं. १९६७–६८ तिर ओंबहालनिवासी पं. निष्ठानन्द वज्राचार्यले लिथोमेशिन बनाउने काममा सफलता प्राप्त गरे। यो मेशिन कन्तुरको आकृतिको थियो। यसमा Compose भएको अक्षर राखी रोलरले मसी दलेर त्यसमाथि कागत राखी छापिन्थ्यो। १२"×६" को नेपाल कागतमा छापिएको ४६० पृष्ठको पहिलो पृष्ठमा लेखिएको छ – "इति श्री ललितविस्तर श्री भगवत चरित्र श्री शाक्यमुनी निर्वाण गमनो नाम प्रकरणं समाप्ती इति सम्बत् १०३४ ने. सं. वैशाख कृष्णया त्रयोदशी शुक्रवार खुन्हू ओंवहाल टोल्स च्वमू निष्ठानन्द वज्राचार्य भाषा उत्तरे यानाजुल सुमं"

प. निष्ठानन्द वज्राचार्यले तयार गरेको छापाखानाको मेशिन आजतक प्राप्त हुन सकेको छैन।

## जन्म, पारिवारिक जीवन र व्यक्तित्व

पं. निष्ठानन्द वज्राचार्यको जन्म काठमाडौंको ओंबहाल नःबही टोलमा वि. सं. १९१५–(ने. सं. ९७८)- मा भएको भनिन्छ। उनकी माताजीको नाम श्री एकुमती र पिताजीको नाम श्री मुक्तानन्द थियो। त्यसताका पाठशालाको शिक्षा वा उच्च शिक्षाको नामनिशाना थिएन। उनले थोर-बहुत संस्कृतशिक्षा आफ्नै पिताजीबाट प्राप्त गरे।

१५ वर्षको उमेरमा उनको विवाह भयो र २० वर्षको उमेर हुँदा २ बच्चाको बाबु बन्न पुगे। संयोगवश त्यसै वेला उनका आमा-बाबु दुबै परलोक भए। त्यसपछि सारा घरगृहस्थीको भार जम्मै उनको शिरमा पर्न आयो। त्यसकारण आफ्नै निजी व्यापार गरी जीवन–यापन गर्न लागे। ४–६ वर्षपछि उनका फुक्की भाद्र श्री मानहर्षले विद्याध्ययन गरेर केही

१. ग्रीष्मबहादुर देवकोटाद्वारा लिखित नेपालको छापाखाना र पत्र-पत्रिकाको इतिहास पृ. २१

बौद्धशिक्षा प्रचार गर्नमा नाम कमाए, तर निष्ठानन्दले भने दुःखमा नै दिन बिताउनुपर्‍यो। यो देखेर मानहर्षले पुराण कथा सुनाउँदा निष्ठानन्दले टीका गर्ने सल्लाह दिए।

यस्तो सल्लाह सुने पछि निष्ठानन्दको स्वाभिमान जाग्रत् भएर आयो। उनले तत्कालै आफू पनि कम नहुने प्रण गरे। उनलाई प्राचीन महापुरुषहरूको संस्मरण भयो।

## नोकरी र शिक्षा

त्यस वेला घण्टाघर पुस्तकालयको पुस्तकालयाध्यक्ष पं. कुलमान थिए। निष्ठानन्दले उनको रोहबरमा रही **सारस्वत व्याकरण**को अध्ययन गरे। आफूले अध्ययन गरेका विषय आफ्ना छोरा श्री मोहनमानन्द -(जुजुरत्न)- लाई पनि सिकाए। त्यसपछि पण्डित ब्राह्मण आफूकहाँ डेरा गरी बस्न आएपछि उनबाट लघु कौमुदी, मध्य कौमुदी र सिद्धान्त-कौमुदी पढे। साथै काव्य, अलङ्कार र कोषको पनि गहन अध्ययन गर्ने मौका पाए। फलस्वरूप निष्ठानन्दको गणना एक महान् पण्डितको रूपमा हुन थाल्यो।

## पौराणिक कथाकारको रूपमा

वि. सं. १९५८ -(नेपाल संवत् १०२१)-को चतुर्मासको समयमा नेवारी भाषामा ललितविस्तर, भद्रकल्यावदान आदिबाट बडो रोचक तरीकाले पुराण सुनाएर नाम बनाए। तर अपशोच त्यसै वेला उनकी धर्मपत्नी श्री रत्नप्रभा परलोक भइन्। पछि घर-गृहस्थी स्थिर होओस् भन्ने उद्देश्यले उनले दोस्रो विवाह गरे।

त्यसपछि नेपाली पास गरेर राइटरको पदमा नियुक्त भए। त्यसताका राइटर भन्ने दर्जा पनि कम थिएन। सोही पदमा रहेर तीन वर्षजति आफ्ना जहान-बच्चाहरूसहित बाजुरामा खटिएर गए। वि. सं. १९६३ (ने. सं. १०२६) मा पुनः काठमाडौं फर्की आएपछि उनले बुद्धको जीवन चरित्रसम्बन्धी पुराण भन्ने काम गर्न थाले। ४ वर्षसम्म विभिन्न ठाउँमा गएर भगवान् बुद्धको जीवनी, यशोधरा महारानीको जीवनी आदि श्रवण गराउँदा बौद्धमार्गीहरूमा बुद्धभगवान्प्रति ठूलो श्रद्धा र भक्तिको जागरण भयो। यसभन्दा अघि बुद्धको केही जात्तकमाला-कथा मात्र सुन्न पाइन्थ्यो,

किनभने बुद्धजीवनी संस्कृतबाट अनुवाद गरी नेवारीमा सुनाउन सक्ने कुनै बौद्ध पण्डित थिएन ।

## वैज्ञानिक प्रेरणा

नेवारी भाषामा पुस्तक-प्रकाशन गर्न सकेमा आम बौद्धमार्गीहरूले देवनागरी लिपिमा पढ्न पाउँछन् भन्ने विचारले **ललितविस्तर, भद्र-कल्यावदान, स्वयम्भूपुराण, गुणकारण्डव्यूह, आर्य अष्टसाहस्रिका** आदि अनेक बौद्ध ग्रन्थहरूको अनुवाद नेवारीमा गरी लेख्न थाले । पुस्तकहरू छाप्ने त्यस वेला राम्रो प्रबन्ध थिएन । त्यसैले उनी आफैं कलकत्ता गएर टाइप अक्षर किनेर ल्याए । आफ्नै अडकलले एक प्रकारको सानो बाकस किसिमको छापा मेशिन (Pressmachine) को आविस्कार गर्न सफल पनि भए । यो उनको आफ्नै ढङ्गको डिजाइन थियो । उनले केही वर्षसम्म अथक परिश्रम गरी आफैले ललितविस्तरजस्तो ठूलो पुस्तकलाई नेवारीमा अनुवाद गरी आफैले अक्षर मिलाएर कन्तुरमेशिनबाट छापी वि. सं. १९७१ -(ने. सं. १०३४)–मा प्रकाशित गरे । यसमा उनका छोरा श्री जुजुरत्नले पनि भरसक सहयोग गरेका थिए । श्री माधवलाल कर्माचार्यका अनुसार पहिले प्रकाशित भएको **एकविंशति प्रज्ञापारमिता** थियो (सन् १९०१) र पाँच वर्षपछि **ललितविस्तर** प्रकाशित भएको थियो ।[१] नाममा ललितविस्तर भए पछि यसमा अनेक बौद्ध ग्रन्थहरू जस्तै भद्रकल्यावदान, स्वयम्भूपुराण, गुणकारण्डव्यूह, अष्टसाहस्रिका आदि गरी यस ग्रन्थमा ६१ अध्याय समाविष्ट छन् ।

## योगदान

पं. निष्ठानन्दको योगदान दुई क्षेत्रमा देखा पर्न आउँछ । (१) नेपाल बौद्ध जगत्मा नव जागरण ल्याउने र आफ्नो भाषाप्रतिको ममता जगाउने कार्यमा (२) एक सफल प्रविधिज्ञको रूपमा । कुवेर रत्न वज्राचार्यबाट आविष्कार गरिएको बुद्धप्रेस (१८९२) र पं. निष्ठानन्दले बनाएको निष्ठानन्द प्रेस वास्तवमा नेपाली प्राविधिक सृजनात्मक शक्तिको आभास

१. Madhav Lal Karmacharya – *Printing in Nepal* Page 2.

दिने उदाहरण हुन् । पं. निष्ठानन्दज्यूको कन्तुरप्रेस ठ्याम्मै नेपाली माल-सामानबाट डिजाइन गरी बनेको (टाइप अक्षर हाहेक) प्रेस थियो । त्यसमा आयतनाकारको बाकसमा छाप्ने अक्षर मिलाइएको भाँडो राखेर त्यसमा एक रोलरबाट मसी लगाइन्थ्यो र त्यसमाथि एक ताउ कागज राखेर थिचिन्थ्यो र अक्षर सब दुरुस्त नै त्यस कागतमा आउँथे । यो कन्तुरप्रेसबाट १२"×६" वा ६"×१०" सम्मको कागतमा छाप्न सकिन्थ्यो । उक्त ललितविस्तर ग्रन्थको अन्तिम पृष्ठको फोटो तल दिइको छ ।



७०–८० वर्षअगाडि हाम्रा प्रविधिज्ञले आफ्नो सृजनात्मक प्रतिभा देखाएर गएको प्रमाण यही हो । सो ग्रन्थ अत्यन्त राम्रो नेपाली कागतमा दुवैतिर छापिएको थियो ।

छापाखानाको स्थापना र ग्रन्थको प्रकाशनविना सांस्कृतिक, सामाजिक र धार्मिक कुनै पनि ज्ञानको प्रचार-प्रसार हुन सक्तैन भन्ने ठानेर अदम्य उत्साह र जाँगर देखाएर आफ्नो प्राविधिक प्रतिभाको परिचय दिई नव जागरणको लहर चलाउने पं. निष्ठानन्द नै थिए ।

उस वखतमा नेवारीमा पुस्तक छाप्नु भनेको मामूली कुरा थिएन । जो कोहीले साहस गर्न सक्दैनथ्यो । यसमा एक रोचक घटना दिइन्छ । ने. सं. १०४४ मा तिब्बतको खाम भन्ने प्रदेशबाट एकजना क्यांछे लामा भन्ने व्यक्ति आफ्नै शरीरले पृथ्वी नापेर दण्डवत् प्रणाम गर्दै खामदेखि काठमाडौंको

स्वयम्भू-चैत्यसम्म पुगेका थिए। ती लामा गुरुको अनेक आध्यात्मिक चमत्कार-को बयान अझै सुनिन्छ। उनले ठाउँ-ठाउँमा बौद्ध धर्मको विषयमा नेवारी भाषामा कविता लेख्न लगाई प्रकाशक भवानीवीरसिंहबाट प्रकाशित मात्र के गराएका थिए सरकारी अधिकारी वर्गमा खलबली मच्चियो र तुरुन्त कवि योगवीरसिंह र प्रकाशक भवानी वीरसिंहलाई जनही रु. १०।१० जरीवाना गरियो। त्यसै वेलादेखि कुनै पनि पुस्तक पुस्तिका छपाउन समितिबाट पास गराउनुपर्ने नियम निकालियो।

यसबाट पं. निष्ठानन्दलाई भारी फसाद पऱ्यो। समितिबाट पास गराउनु गाह्रै कुरा थियो। त्यसै वेला थानाको हाकिम श्री नरनारायण शाह स्वयं केही पुलिस साथ लिई पं. निष्ठानन्दको घरभित्र पसेर नेवारी भाषामा प्रकाशन गर्न नपाउने कुरो सुनाउँदै दण्ड-जरीवाना हुने भनी नसीहत दिएर गए। पण्डितज्यू ठूलो सङ्कटमा परे। तर उनले आफ्नो हिम्मत छाडेनन्। सबै जना सुतिसकेपछि राति-राति बसी आफूले बनाएको कन्तुरप्रेस चलाएर ३–४ पाना गर्दै जम्मै छापी निकाल्न सफल भए। यो उनको कम ठूलो योगदान होइन।

यो पुस्तकको नेवारी रूपान्तरको प्रकाशनबाट नेवारी बौद्ध जगत्मा ठूलो जागरण आयो। एक दिनको घटना थियो पं. निष्ठानन्दको घरमा एकजना आठपहरिया आएर टुङ्गाल-दरबारमा आउनुपऱ्यो भनी बोलाएर लग्यो। त्यस जमानामा किन कसरी भन्ने प्रश्न उठ्दैनथ्यो। पण्डितजीको घरमा खैलाबैला भयो। तर भाग्यवशं उनी बेलुकी ५–६ बजेतिर फर्केर आए। उनलाई तात्कालिक चीफसाहेब भीमशमशेरको बैठकमा उपस्थित गराइयो। त्यहाँ माहिला गुरुज्यू हेमराज र अरू नम्बरी पण्डितहरू पनि थिए। पं. निष्ठानन्दलाई पनि मेचमा बसालेर चीफसाहेबबाट आदेश भयो – 'ए गुभाजु! प्रतीत्य समुत्पादको अर्थ के हो? तिमीले जाने बुझेसम्म राम्ररी व्याख्या गरी सबैलाई सुनाइदेऊ?' तब पं. निष्ठानन्दले अति रोचक ढङ्गले प्रतीत्य समुत्पाद बौद्ध दर्शनको एक सिद्धान्त राम्ररी व्याख्या गरी सुनाए। यसबाट सबैजना सन्तुष्ट भए। चीफसाहेबबाट उनलाई नगद रु. ५००।– बक्स भयो। अरू एक जनरलले रु. ५०।– बक्स दिए। माहिला गुरुज्यूले घण्टाघरको पुस्तकालयमा नोकरी दिलाइदिने आश्वासन दिए। सरकारी स्तरमा उनको अथक परिश्रमबापत मिलेको मान यही एउटा थियो।

त्यस घटनापछि उनको मनमा अवश्य पनि केही आत्मसन्तुष्टि भयो होला । उमेर पुगिसकेकोले फेरि सरकारी नोकरीमा बसी पराधीन हुन उनलाई इच्छा भएन । बरु उनले आफ्नो प्यारो पाको पोखल्डचांङ्को वरपिपलको रूखमुनि बसेर ३ वर्षसम्म बौद्ध पुराणका कथा सुनाउने काममा लागिरहे ।

## अन्तिम दिन

उनको जीवनका अन्तिम दिन योगाभ्यास र पुरश्चरण- (एक प्रकारको समाधि) -मा बित्ने गर्दथ्यो । आफ्नो ध्यान-धारणामा शान्ति-पूर्वक लाग्न उनी घर छाडी कहिले स्वयम्भू सत्तलमा बस्ने गर्दथे त कहिले मञ्जु-श्रीस्थलको अगाडिको सत्तलमा बसी दिन व्यतीत गर्दथे । तर आफ्नो एकान्तको समयमा पनि कुनैं न कुनै काममा व्यस्त रहन्थे । यसरी योगाभ्यासको जीवन बिताउँदै वि. सं. १९९२ (ने. सं. १०५५ मा उनले नश्वर देहको त्याग गरे ।

## विदेशी पण्डितहरूको दृष्टिमा पं. निष्ठानन्द

वि सं. १९७६-१९७७ सालतिरको कुरा थियो । पं. निष्ठानन्द असनढालसिनिवासी श्री रामसुन्दर साहूसँग कलकत्तामा पुगेका थिए । श्री रामसुन्दर साहुसँग उनी एसियाटिक सोसाइटी अफ बेंगालको पुस्तकालय हेर्न गए । त्यस बेला त्यहाँ केही धुरन्धर बङ्गाली पण्डितहरू नेपालविषयका पुस्तकको अध्ययन गरिरहेका थिए । उनीहरूलाई पं. निष्ठानन्दको परिचय पाएपछि उनीहरूले नबुझेका केही शब्दहरूको व्याख्या गरिदिने निष्ठा-नन्दसँग अनुरोध गरे । पं. निष्ठानन्दले ती शब्दहरूको अति सुन्दर ढङ्गले व्याख्या गरिदिदां ती बङ्गाली पण्डितहरू ज्यादै खुशी भएर उनलाई सोसायटीको तर्फबाट ठूलो सत्कार स्वागत गरे ।

हुनत हामीलाई आजकलको अत्याधुनिक छापने यन्त्रको जमानामा पं. निष्ठानन्दले आविष्कार गरेको सानु कन्तुरप्रेस ज्यादै मामूली जस्तो लाग्दछ, तर हामीले त्यस बेलाको नेपालको वातावरणउपर विचार गर्नुपर्छ । एउटा कविता नेवारीमा छापेर प्रकाशन गरेबापत रु १०।– जरीवाना तिर्नुपर्ने समयमा पं. निण्ठानन्दले ललितविस्तरको मोटो किताब लुकी-लुकीकन रातारात गरी छाप्नुबाट उनमा सच्चा प्रविधिज्ञको त्याग र तपस्या स्पष्ट झल्कन्छ ।

आज पूज्य गुरु निष्ठानन्द हाम्रो बीचमा छैनन् । तथापि उनले आफै बनाएको प्रेस मेशिनबाट छापिएको ललितविस्तर ग्रन्थ हाम्रो अगाडि रहिरहेकै छ। यसै कृतिले गर्दा उनलाई सर्वसम्मतिबाट गद्य-गुरु भन्ने उपाधि प्रदान गरियो ।

## सहायक ग्रन्थ र अन्य स्रोत


१. ख्रीगु साहित्य – चित्तधर हृदय प्रकाशक नेपालभाषा-परिषत्
२. पं. अभयानन्द वज्राचार्यबाट प्राप्त सामग्री ।